# भक्तपुर र प्योङसङबीच भगिनी सम्बन्ध स्थापना

भक्तपुर नगरपालिकाको आयोजनामा नेपालको भक्तपुर नगर र प्रजातान्त्रिक जनगणतन्त्र कोरियाको प्योङसङ नगरबीच दुई नगरका जनताबीच समानता र आपसी हितको सिद्धान्तमा आधारित रही मित्रता र आपसी सहयोग विस्तारको उद्देश्यसहित कायम भएको भगिनी सम्बन्धको सम्झौता पत्रमा यही साउन ३ गते हस्ताक्षर कार्यक्रम भयो ।

उक्त समारोहका प्रमुख अतिथि नेपाल मजदुर किसान पार्टीका अध्यक्ष एवम् संविधानसभा सदस्य नारायणमान बिजुक्छें (रोहित) ले नेपाल र कोरियाको दुई नगरबीच कायम भएको भगिनी सम्बन्धले दुई देशबीचको मित्रता नयाँ रूपले अघि बढेको बताउनुभयो ।

नेपाली र प्रजग कोरियालीबीचको आपसी सम्बन्ध अमर बनाउन सहयोग पुगेको बताउनु हुँदै उहाँले दुई नगरबीच भएको सम्झौताले नगरले आफ्नो प्रगतिका लागि गरेका विभिन्न क्रियाकलापहरूको आदानप्रदान भएर नगरको विकासमा टेवा पुग्ने तथा दुवै नगरले गरेका प्रगति र उन्नतिको पाठबाट नगरवासीले दीक्षित हुने अवसर पाउने विश्वास व्यक्त गर्नुभयो ।

उहाँले दुई नगरबीच सम्झौतालाई सकारात्मक र सराहनीय मात्र नभएर सो सम्बन्धले नेपाल मजदुर किसान पार्टी र कोरियाली मजदुर पार्टीबीचको सम्बन्ध पनि सुदृढ बनाउन कोशेढुङ्गाको भूमिका निर्वाह गर्ने बताउनु भयो ।

कोरियाको हरेक वर्ष श्रमवीरलाई सम्मान गर्ने परम्परा अनुशरणयोग्य भएको बताउनु हुँदै उहाँले श्रमको सम्मानका लागि भूमिका खेल्नेलाई सम्मान गर्ने वातावरण समाजवादी मुलुकमा भएको तथ्य कोरियाबाट थाहा भएको बताउनुभयो ।

कार्यक्रममा प्रजग कोरयाको सर्वोच्च सभाका प्रतिनिधि र प्योङयाङ नगरका अध्यक्ष सुश्री आन म्योङ ओकले सम्झौता पत्रमा हस्ताक्षरसँगै नयाँ इतिहासको सुरुवात भएको बताउनुभयो । उहाँले नेपालको राजनीतिक स्थिरता र सामाजिक सुरक्षाका लागि शुभकामना व्यक्त गर्दै प्रजग






दुई नगरबीचको भगिनी सम्बन्धको सम्झौतापत्र आदानप्रदान गर्दै

कोरियाली जनता समाजवाद रक्षाका लागि अन्तिम दमसम्म लड्न तयार रहेको पनि चर्चा गर्नुभयो ।

उहाँले प्रजग कोरियाको समाजवाद र दुई कोरियाको शान्तिपूर्ण एकीकरणका लागि पनि भगिनी सम्बन्धले थप ऊर्जा दिने उल्लेख गर्नुभयो ।

कार्यक्रममा संविधानसभा सदस्य तथा नेमकिपा विदेश सम्बन्ध विभाग प्रमुख प्रेम सुवालले प्रजग कोरियामा भएको क्रान्तिका कारण कोरियाली जनताले शिक्षा स्वास्थ्य निःशुल्क भएको, कर तिर्न नपर्ने देश, प्रदूषण नभएको देशजस्ता विशेषताले भरिएको चर्चा गर्नुभयो । उहाँले नेपाली जनता दुई कोरियाको शान्तिपूर्ण एकीकरणको पक्षमा रहेको बताउनु हुँदै कोरियामा विद्यमान साम्राज्यवादीहरूको हस्तक्षेप तत्काल हट्नुपर्नेमा जोड दिनुभयो ।

कार्यक्रममा प्रजग कोरियाका महामहिम राजदूत किम योङ हकले दुई नगरबीच सम्बन्ध कायम हुनुमा प्रजग कोरियाका किम इल सुङ, किम जोङ इल र किम जोङ उनलगायतको भूमिका रहेको बताउनुभयो ।

नेपाल र प्रजग कोरियाको राष्ट्रियगानबाट शुरु भएको उक्त कार्यक्रममा नेमकिपाका कोषाध्यक्ष एवम् भक्तपुर नपाका जननिर्वाचित उपमेयर चैत्यराज शाक्यले भक्तपुर नगर र एसियाकै एक मित्रराष्ट्र प्रजग कोरियाको प्योङसङ नगरबीचको भगिनी सम्बन्धले नगरका साथै दुई देशका जनताबीचको सम्बन्ध अझ सुमधुर र गाढा हुने विश्वास व्यक्त गर्नुभयो ।

भक्तपुर नगरपालिकाका कार्यकारी अधिकृत राममणि भट्टराईले सभापतिको आशनबाट दुई नगरहरूबीचको ज्ञान, सीप तथा अनुभवको आदान प्रदानबाट प्राप्त हुने उर्जाबाट आगामी दिनमा थप बढी उपलब्धी हासिल हुने विश्वास व्यक्त गर्नुभयो ।

भगिनी सम्बन्ध स्थापना गर्ने सम्झौता पत्रमा भक्तपुर नगरपालिकाको तर्फबाट कार्यकारी अधिकृत राममणि भट्टराई र प्योङसङ नगरका तर्फबाट प्योङसङ नगरका जनसमिति अध्यक्ष आन म्योङ ओकले हस्ताक्षर गर्नुभएको थियो ।

दुई नगरबीच कायम भएको भगिनी सम्बन्धको सम्झौता पत्र नेपाली, कोरियाली र अंग्रेजी भाषामा रहेका छन् भने ५ वटा दफाहरू उल्लेख गरिएका छन् । पत्रमा दुबै नगरले एकआपसको सम्बन्ध प्रगाढ बनाउन तथा सहकार्य गर्ने, आर्थिक, विज्ञान, प्रविधि र व्यापार क्षेत्र, नगर निर्माण

# भक्तपुर - प्योङसङबीच भगिनी सम्बन्ध स्थापना कार्यक्रमका केही झलक



प्रमुख अतिथि नेमकिपाका अध्यक्ष नारायणमान बिजुक्छें मन्तव्य व्यक्त गर्नुहुँदै



कोरियाली प्रतिनिधिमण्डलका नेतृ आन म्योङ ओक मन्तव्य व्यक्त गर्नुहुँदै

र प्रशासन तथा वातावरण संरक्षण, शिक्षा, जनस्वास्थ्य, संस्कृति, कृषि र खेलकुद क्षेत्रमा सहयोग आदानप्रदान गर्ने, प्रतिनिधिमण्डल आदानप्रदान गर्नेलगायतका बुँदाहरू उल्लेख गरिएका छन् ।

हस्ताक्षर कार्यक्रममा प्रमुख जिल्ला अधिकारी अनिलकुमार ठाकुर, स्थानीय विकास अधिकारी अर्जुन थापा, जिल्ला प्राविधिक कार्यालयका प्रमुख इन्जिनियर गणेशलाल कोजू, जिल्लास्थिति विभिन्न सरकारी कार्यालयका प्रमुख तथा विभिन्न राजनीतिक दलका प्रतिनिधि, बुद्धिजीवी, सांस्कृतिक अगुवालगायत गण्यमान्य नगरवासीहरूको उपस्थिति थियो ।




हस्ताक्षर कार्यक्रमपश्चात विभिन्न साँस्कृतिक कार्यक्रमका साथै विदेशी पाहुना तथा अतिथिहरूलाई रात्रीभोज दिइएको थियो ।

औपचारिक कार्यक्रम अगाडि कोरियाली पाहुनालाई भक्तपुर नगरका विभिन्न ऐतिहासिक तथा साँस्कृतिक क्षेत्र अवलोकन गराइएको थियो ।

सम्झौताको लागि आएको कोरियाली प्रतिनिधिमण्डलको नेतृत्व सर्वोच्च जनसभाका सदस्य तथा प्योङसङ जनसमितिका अध्यक्ष आन म्योङ ओकले गर्नु भएको हो । प्रतिनिधि मण्डलमा जनसमितिका सदस्यद्वय किम सुन ए र रि व्ही जोङ र कोरिया नेपाल मैत्री समाजका महासचिव सोङ हो इल रहनुभएको छ ।

कोरियाली प्रतिनिधिमण्डल साउन ६ गते स्वदेश प्रस्थान गर्ने कार्यक्रम रहेको छ ।




सभासद प्रेम सुवाल



कोरियाली राजदूत किम योङ ह




जननिर्वाचित उपप्रमुख चैत्यराज शाक्य



कार्यकारी अधिकृत राममणि भट्टराई





आन म्योङ ओक (बायाँ) र राममणि भट्टराई (दायाँ)
सम्झौता पत्रमा हस्ताक्षर गर्नुहुँदै